नेपाल संवत् ११४१ बछला ३१
२०७८ जेठ ३

Ref. No. पत्र संख्या 083/66/78
Date मिति २०७८/०२/०३
PN पत्र २

**क्वयेरद्वेषिता विरुद्धको अन्तर्राष्ट्रिय दिवस (मे १७) को संयुक्त वक्तव्य**

बिना कुनै वैज्ञानिक आधार प्रमाण सामाजिक मूल्यमान्यताकै भरमा सन् १९७७ मा विश्व स्वास्थ्य संगठनले समयौनिकता (Homosexuality) लाई मनोरोग अन्तर्गत गरिएको सूचिकरणलाई सन् १९९० मे १७ तारिखका दिन विश्व स्वास्थ्य संगठन स्वयंले सूचीबाट हटाएको र मानव यौनिकताको विविधता प्रति लाञ्छना विरुद्ध कार्यबद्ध भएको यस ऐतिहासिक दिनको स्मृतिमा वर्षेनी यस दिनमा क्वयेरद्वेषिता विरुद्धको अन्तर्राष्ट्रिय दिवस (International Day Against Queerphobia) मनाउँदै आएका छौँ ।

यस दिवसको सुरुवाती समयमा समद्वेषिता (homphobia) अर्थात् समयौनिक व्यक्तिहरू प्रतिको घृणा विरुद्धको दिवसका रूपमा मानिएतापनि क्रमशः यो दिवस विकास हुँदै द्विद्वेषिता (biphobia) अर्थात् द्वियौनिक व्यक्तिहरू प्रतिको घृणा, पारद्वेषिता (transphobia) अर्थात् पारलैङ्गिक व्यक्तिहरू प्रतिको घृणा, अन्तरलिङ्गीद्वेषिता (intersexphobia) का विषयहरू पनि थपिँदै गएको छ भने सन् २०१९ देखि हाम्रो समूहले सम्पूर्ण सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरू (PoMSOGIESC) लाई समावेश गर्न क्वयेरद्वेषिता (queerphobia) को प्रयोग गर्दै आएका छौँ ।

दिवसको सामाजिक संजाल ह्यासट्याग : *#IDaQu #IDaQu2021 #IDaQuNepal #क्वयेरद्वेषिता_विरुद्ध*

हामीले यस वर्ष नेपालका लागि देहायको नारा जारी गरेका छौँ : **"अन्यलिङ्गी निर्देशिका विरुद्ध आवहान : यौभिकयौता परिभाषा स्थापनाको आधार"** । गृह मन्त्रालयले 'अन्यलिङ्गी' सम्बन्धी जारी गरेको निर्देशिकामा प्रयुक्त शब्दावली एवं परिभाषाहरू नेपालमा सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरू (क्वयेर व्यक्तिहरू) को उत्पीडनको कारक बनेको छ । यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) तीन फरक फरक विषयहरूलाई मिसाएर अन्योलतापूर्वक परिभाषा गरिँदा हामी सम्पूर्ण क्वयेर जनसंख्याका व्यक्तिहरूलाई प्रतिकूल असर पुर्याएको छ । त्यसैले






यौभिकयौता सम्बन्धीको विस्तृत र सघन शब्दावली र तिनका परिभाषाहरू स्थापना गर्नका साथै लैङ्गिक पहिचानको वास्तविक आवश्यकतालाई सम्बोधन हुने गरी कानून निर्माण हुनुपर्ने र अन्यलिङ्गी निर्देशिका खारेजीको लागि हामी आवहान गर्दछौँ ।

यसै कार्यलाई सहयोग हुने गरी हामीले तीन महिना अगाडी यौभिकयौताको अवधारणा सम्बन्धी पुस्तक प्रकाशन गरेका थियौँ । उक्त पुस्तक यहाँ प्राप्त गर्न सकिन्छ :
https://nepalcfc.org/basic_sogiesc_nepali/

त्यसका साथै, हाम्रो यस वर्षको नारालाई टेवा पुग्ने, क्वयेरद्वेषिता विरुद्धको अन्तर्राष्ट्रिय दिवसमा यस वर्ष हामीले दुईवटा पुस्तकहरू सार्वजनिक गर्दैछौँ ।

१) लैङ्गिक पहिचानको अधिकार सम्बन्धी सन् २०२० का मागपत्रहरू, ISBN: 978-9937-0-8912-3

- सन् २०२० हाम्रो लागि मागपत्रहरूको वर्ष भयो । विगत लामो समय देखि उठिरहेको लैङ्गिक पहिचान सम्बन्धीका सरोकारहरू बारे हामीले समुदाय स्तरमा व्यापक छलफल गरी मागपत्रहरू जारी गरेका थियौँ । ती मागपत्रहरू पोहोर साल पिडिएफ र डक फाइलमा गुगल ड्राभ मार्फत् प्रकाशन गरेका थियौँ भने ती सबै मागपत्रहरूलाई संगालेर यस वर्ष पुस्तकका रूपमा प्रकाशन गर्दैछौँ । यसमा राष्ट्रिय पारलैङ्गिक मागपत्र, नेपालमा लैङ्गिक पहिचानको कानूनी मान्यता सम्बन्धी राष्ट्रिय मागपत्र, नागरिकता विधयकमा लैङ्गिक पहिचान सम्बन्धीको मागपत्र, र राष्ट्रिय अन्तरलिङ्गी मागपत्र संगालिएको छ । यी सबै मागपत्र सम्बन्धित जनसंख्याको लैङ्गिक पहिचानको कानूनी मान्यतासँग सम्बन्धित छ ।

  यो पुस्तक यहाँबाट प्राप्त गर्नुहोला : https://nepalcfc.org/demandsheetbook-nep/

२) गृह मन्त्रालयको अन्यलिङ्गी निर्देशिका : मानव अधिकारको हनन, ISBN: 978-9937-0-8913-5






- गृह मन्त्रालयले "यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरूलाई लिङ्गको महलमा 'अन्य' जनाई नागरिकता जारी गर्ने सम्बन्धी निर्देशिका, २०६९" नामक एक निर्देशिका जारी गरेका छन् । यस निर्देशिकाले यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताको वास्तविक अर्थ नबुझी तीनवटै कुरालाई 'लैङ्गिक पहिचान'को रूपमा परिभाषा गरेको छ र महिला पुरुषमै नागरिकता लिनचाहेका जनसंख्यालाई समेत 'अन्य' उल्लेख गर्न बाध्य बनाएको छ । हामीले यस अन्याय र मानव अधिकारको हनन विरुद्ध राष्ट्रिय मानव अधिकार आयोगमा उजुरी गरेका थियौँ र सोही उजुरी एवं त्यसको अङ्ग्रेजी अनुवादलाई संगालेर यो पुस्तक प्रकाशन गरेका हौँ ।

यो पुस्तक यहाँबाट प्राप्त गर्नुहोला : https://nepalcfc.org/anyalingi_complaint/

**संयुक्त जारी**


रुक्शना

रुक्शना कपाली
कार्यकारी निर्देशक
क्वयेर युथ ग्रुप
कम्पनी दर्ता नं : २४४९३५/०७७/०७८




Esan

इशान रेग्मी
कार्यकारी निर्देशक
क्याम्पेन फर चेन्ज
कम्पनी दर्ता नं : १६८३०१/७३/७४




queeryouthgroup.nepal@gmail.com

campaignforchange17@gmail.com